**ओ३म्..**

**के आर्यहरु बाहिरबाट आएका हुन्?**

आज भोलि एक तथाकथित् दलित वर्ग (विशेष गरि अम्बेडकरवादी)ले आफ्नो अल्प ज्ञान तथा राजनैतिक स्वार्थको लागि आर्यहरुलाई बाहिर बाट आएका बिदेशी, लुटेरा, आक्रमणकारी आदि आदि संज्ञाले बद्नाम गर्ने अधम तथा नीच चाल रच्दै छन्, जुन स्वकल्पित मान्यता तथाकथित् कम्निष्ट, अंग्रेजी र विदेशी इसाई इतिहासकारहरु द्वारा चलाइएको हो जसको उद्देश्य सनातन वैदिक संस्कृति र मान्यतालाई ध्वस्त गरेर यस क्षेत्रको अखंडता र एकता नाश गर्न चलाइएको फुटाउ र राज गरको नीति थियो|

त्यहि मान्यतालाई अहिले अम्बेडकरवादीहरुले हावा दिंदैछन्| जब स्वयं अम्बेडकरले नै "शुद्र को थिए" नामक आफ्नो पुस्तकमा आर्यहरु विदेशी हुन् भन्ने धारणालाई प्रबल रुपले खण्डन गरेका छन्| स्मरण योग्य कुरो यो पनि छ कि अम्बेडकरलाई उच्चशिक्षा आर्जन गर्नको लागि व्यवस्था मिलाउने काममा भारतीय आर्यसमाज र आर्य विद्वानहरुको ठूलो भूमिका छ| यो कुरो उनले पनि स्वीकारेका छन्| आश्चर्य नै मान्नु पर्छ कि आज आएर उनकै भक्तहरु ति तथाकथित् अदलितवादी, अतिवादी एवं डलरवादी लेखक र विचारकहरुको घोर निन्दनीय कार्य जसले आर्यहरु विदेशी हुन् भन्ने हल्ला फैलाए, त्यसैलाई आँखा चिम्लेर समर्थन गर्दै स्यालको हुइयाँ गर्दैछन्|

सर्व प्रथम यो मान्यता द्वारा भारतमा द्रविड (दक्षिण भारतीय) र उत्तर भारतीयहरुमा फुट हालियो| जस अनुसार उत्तर भारतीयहरुलाई आर्य भनियो र उनलाई विदेशी भनेर मूल निवाशी दक्षिण भारतीयहरुको शत्रु बनाइयो| हडप्पा र मोहनजोदडोलाई द्रविड सभ्यता भनियो तर फेरी पछी यिनैले द्रविडहरुलाई पनि विदेशी घोषित गरे र भारतमा मूल निवाशी दलित र आदिवासिहरुलाई बनाए| हुबहु यहि दुषित विचार अहिले नेपालमा फैलिदैछ| हजारौं वर्ष देखि अटुट सम्बन्धका साथ् शान्ति पूर्वक बसेका समाजमा बिष घोल्ने काम भैरहेको छ| यसमा तिनै स्वार्थि तथा कलुषित मनस्थिति भएकाहरु र तिनलाई साथ् दिने अविवेकीहरुको ठूलो भूमिका छ|

सत्यता त यो हो कि न त उनीहरुले आर्यलाई बुझ्ने प्रयास गरे न दस्युहरुलाई| वास्तवमा आर्य नाम गरेको कुनै नस्ल या जाति कहिल्यै कहीं पनि थिएन| आर्य शब्द एक विशेषण हो जसको अर्थ श्रेष्ठ हो| कैयौं विद्वानहरुलाई, महापुरुषहरुलाई र भाषामा पनि आर्य शब्दको प्रयोग गरिएको छ|

आर्य शब्दको मीमांसा गर्नु भन्दा पहिले केहि अंश विदेशी इतिहासकार र विद्वानहरुलाई उद्दृत गर्नु आवश्यक छ जसबाट ति मतिभ्रष्ट विद्वानहरुको षड्यंत्र र कपट सबैलाई अवगत हुन सकोस्| यस सन्धर्भमा मेकाले एक प्रमाण छ| मेकालेले आफ्नो पितालाई लेखेको एक पत्रमा उसले उल्लेख गरेको छ कि हिन्दुहरुलाई आफ्नो धर्म र धर्मग्रन्थहरुको विरुद्ध भड्काएर अंग्रेजी शिक्षाको प्रचार गरि इसाई मत फैलाउनु थियो, यसै गरि 'life and letter of maxmullar' मा पनि maxmullar को एउटा पत्र भेटिन्छ जुन उसले सन् १८६६ मा आफ्नी पत्निलाई लेखेको थियो, पत्र यस प्रकार छ: –

८

"Calcutta October 12, 1836—My dear Father our english school are flourshing wonderfully the effect of this education on the Hindus is prodigious. No Hindu who has received an English education, ever remaius sincirely attached to his religion. Some continuc to profess it as a matter of policy, and some embrace Christionity. It is my belief that, if our plans of education are followed up, there will not be a single idsnlater among the respectable Casts in Bengal thirty years hence. And this will be effected with out any efforts to praselytise, with out the smallest interference with religions liberty by natural operations of Knowledge and reflection. I heartly rejoice in the prospect—Ever yours most effectionately.

—T. B. Macaillay.

*"I hope I shall finish the work and I feel convinced though I shall not live to see it yet this addition of mine and the translation of the vedas will here after tell to great extent on the fate of india and on the growth of millions of souls in that country. it is the root of their religion and to show them what the root is I feel sure, is the way of uprooting all that has sprung from it during the last three thousand years."*

अर्थात, मलाई आशा छ कि मैले यो कार्य सम्पूर्ण गर्नेछु र मलाई पूर्ण विश्वास छ, यद्यपि म त्यो देख्नको लागि जीवित नरहन पनि सक्छु, तथापि मेरो यो संस्करण वेदको आद्यन्त अनुवादले निक्कै हदसम्म भारतको भाग्य र यसका लाखौँ आत्माहरुको विकासमा प्रभाव पार्नेछ| वेद यिनको धर्मको मूल हो र मलाइ विश्वास छ कि यिनलाई यो देखाउनु छ कि त्यो मूल के हो, यस धर्मलाई नष्ट गर्ने एक मात्र उपाय हो, जुन गत ३००० वर्ष देखि त्यस (वेद ) बाट उत्पन्न भएको हो |
यस्तै गरि एउटा अर्को पत्र मेक्समुलरले १६ दि. १८६८ मा भारतका तत्कालीन मंत्री ड्यूक अफ आर्गायललाई लेखेको थियो: –
*"the ancient religion of india is doomed, if christianity does not step in, whose fault will it be?*
अर्थात, भारतको प्राचीनतम धर्मको पतन भैसकेको छ, यदि अहिले पनि इसाई धर्म प्रचलित हुन्न भने त यसमा कसको दोष हो ?
यसबाट यी विदेशिहरुको चाल तथा उद्देश्य सम्झन सकिन्छ |

**के आर्य इरानका निवासी थिए?**

यस घृणित षड्यंत्र अनुसार नै यिनीहरुले आर्यलाई इरानका निवाशी पनि भनेका छन् र आज सम्म पनि भारतका केहि इतिहास पुस्तहरुमा यही पढाइन्छ कि आर्य इरानबाट भारत आएका हुन् तर ईरानिहरुको साहित्यमा यसको विपरीत कुरो लेखिएको छ| त्यहाँ आर्यहरुलाई भारतीय भनिएको छ र आर्यहरु भारतबाट ईरान आएर बसोवास गरेको भनेर लेखिएको छ| जुन प्रमाण यस्तो छ: –
*"चंद हजार साल पेश अज जमाना माजीरा बुजुर्गी अज निजाद आर्यो अज कोह हाय कस्मने मास्त कदम निहादन्द | ब चू आवो माफ्त न्द दरी जा मसकने गुजीदन्द द आरा बनाम खेश ईरान खिया द न्द |"(जुगराफिया पंज किताऊ बनाम तदरीस दरसाल पंजुम इब्त दाई सफा ७५ ,कालम १ सीन अव्वल व चहारम अज तर्क विजारत मुआरिफ व शुरशुद*

अर्थ:- केहि हजार वर्ष पहिले आर्यहरु हिमालय पर्वत नाघेर यहाँ आए र यहाँको जलवायु अनुकूल पाएर ईरानमा बसे|
यस प्रमाणबाट आर्यहरु ईरानबाट आएको भन्ने जुन कोरा कल्पना छ, त्यसको पर्दा फास हुन्छ र खण्डन पनि हुन्छ |

**के आर्यहरु उत्तरी-ध्रुवबाट आएका थिए ?**

यस अल्प बुद्धि मान्यतालाई बल दिने भारतीय विद्वान बाल गंगाधर तिलक हुन्, उनले आर्यहरुलाई उत्तरी ध्रुवका निवाशी भनेका छन् तर जब अर्का विद्वान उमेश चंद विद्या रत्नको यसै सम्बन्धि एक प्रश्नमा उनको उत्तर निक्कै हास्यास्पद थियो| हेरौं तिलकले के भनेका थिए –*"आमि मुलवेद अध्ययन करि नाई | आमि साहब अनुवाद पाठ करिया छे "( मनेवर आदि जन्म भूमि पृष्ठ १२४ )*
अर्थात, मैले मुलवेद पढेको छैन, मैले त साहब (विदेशिहरु) ले गरेको अनुवाद पढेको छु |
उत्तरी ध्रुव सम्बन्धि आफ्नो मान्यताको सन्दर्भमा तिलक महोदयले लेखेका छन् – *"It* **is clear that soma juice was extracted and purified at neight in the arctic "**
अर्थ: – "उत्तरी ध्रुवमा रात्रिको समयमा सोमरस निकालिन्थ्यो|" तिलक ज्यूको यस मान्यताको उत्तर दिंदै नारायण भवानी पावगीले आफ्नो ग्रन्थ "आर्यो वर्तालील आर्याची जन्मभूमिं " मा लेखेका छन् –
*" किन्तु उत्तरी ध्रुवमा सोम लता हुँदै हुन्न,यो त हिमालयको एक भाग मुंजवान पर्वतमा हुन्छ"*

यसबाट स्पष्ट हुन्छ कि आर्यहरु उत्तरी ध्रुवका निवाशी थिए भन्ने लेखकको आफ्नै कोरा कल्पना थीयो | वास्तवमा जब सम्म आर्यहरुलाई एक जाति र नस्लको दृष्टिले हेर्ने गरिन्छ तब सम्म यस्तै किसिमका समस्याहरु आइरहने छन्| आर्यहरु भन्दा पहिले हामीले आर्य शब्दको बारेमा जान्नु आवश्यक छ|

**आर्य शब्दको मीमांसा:-**

आर्य शब्दको प्रयोग अनेकौं अर्थका वेद तथा वैदिक ग्रंथहरुमा गरिएको छ| जसलाई मुख्यतः विशेषण र विशेष्यको लागि प्रयोग गरिएको छ |

निरुक्त ६/२६ मा महर्षि यास्क ले "आर्य: ईश्वरपुत्र:" लेखेर आर्यको अर्थ ईश्वर पुत्र गरेका छन् | ऋग्वेद ६/२२/१० मा आर्यको प्रयोग बलवानको अर्थमा भएको छ |

ऋग्वेद ६/६०/६ मा वृत्रलाई आर्य भनिएको छ अम्बेडकरवादीहरुको मत छ कि वृत्र अनार्य थियो तर ऋग्वेदमा "हतो वृत्राण्यार्य" भनिएको छ, यहाँ आर्य शब्द बलवानको रूपमा प्रयुक्त भएको छ जसको अर्थ हुन्छ- बलवान वृत्र र वृत्रको अर्थ निघंटुमा मेघ हो अर्थात, बलवान मेघ |

यसैगरी ऋ. ९/६३/५मा "कृण्वन्तो विश्वार्यम " अर्थात सम्पूर्ण विश्वलाई आर्य बनाऊ भनेर उपदेश दिएको छ| यहाँ आर्य शब्द श्रेष्ठको अर्थमा लिएको छ| यदि आर्य कुनै जाति या नस्ल विशेष हुन्थ्यो भने त सम्पूर्ण विश्वलाई आर्य बनाऊ भन्ने उपदेश हुने थिएन |

**आर्य शब्दको विविध प्रयोग:-**

१- ऋग्वेद १/१०३/३, १/१३०/८ र १०/४९/३ मा आर्यको प्रयोग श्रेष्ठको अर्थमा भएको छ |
२- ऋग्वेद ५/३४/६, १०/१३८/३ मा ऐश्वर्यवान (इंद्र) को रूपमा प्रयुक्त भएको छ|
३- ऋग्वेद ८/६३/५ में सोम के विशेषण में हुआ है |
४- ऋग्वेद १०/४३/४ मा ज्योतिको विशेषणमा भएको छ |
५- ऋग्वेद १०/६५/११ मा व्रतको विशेषणमा भएको छ |
६- ऋग्वेद ७/३३/७ मा प्रजाको विशेषणमा भएको छ|
७- ऋग्वेद ३/३४/९ मा वर्णको विशेषणमा भएको छ|

ऋग्वेद १०/३८/३ मा "दास आर्यों " शब्द आएको छ यहाँ दासको अर्थ शत्रु, सेवक, भक्त आदि को रुपमा आएको छ भने आर्यको महान, श्रेष्ट र बलवानको रुपमा| यहाँ 'दास आर्य' यस पदको अर्थ बलवान शत्रु, महान भक्त, श्रेष्ठ सेवक आदि हुन्छ| यहाँ दासलाई आर्य भनिएको छ|

अत: स्पष्ट छ कि आर्य शब्द नस्ल या जातिवादी हैन कि यसको अर्थ हुन्छ महान, श्रेष्ठ, बलवान, ऐश्वर्यवान, ईश्वरपुत्र, आदि जुन विश्वको कुनै पनि व्यक्ति, जाति, वंशको लागि प्रयुक्त हुन सक्छ|

**अन्य महापुरुषहरु द्वारा, सभ्यता तथा भाषामा आर्य शब्द:-**

- ईरानका राजाले आर्य मेहरको उपाधि लगाउने गर्दथे किनकि उनले आँफूलाई सूर्यवंशी क्षत्रिय सम्झन्थे|
- अनातोलिया (आधुनिक तुर्की १६००-१२०० ई-पू.) को हित्ती भाषामा आर्य शब्द पाइन्छ|
- न्याय दर्शन १-१०मा वात्सायन भाष्यमा आर्य शब्दको प्रयोग भएको छ|
- महाभारतमा अनेकौं स्थलका साथ साथ उद्योग पर्वमा आर्य शब्दको उलेख छ|
- रामायण बालकाण्डमा आर्य शब्द आएको छ:- श्री रामको उत्तम गुणहरुको वर्णन गर्दै वाल्मीकि रामायणमा नारद मुनिले भनेका छन् – "आर्य: सर्वसमश्चायमं, सोमवत् प्रियदर्शन: |" (रामायण बालकाण्ड १/१६) अर्थात्, श्री राम आर्य, धर्मात्मा, सदाचारी, सबलाई समान दृष्टिले हेर्ने र चंद्र झैं प्रिय दर्शन थिए|"
- किष्किन्धा काण्ड १९/२७ मा बालिकी स्त्रीले पतिको वध भए पछी उसलाई आर्य पुत्र भनेर विलाप गर्छे|
- भविष्य पुराणमा "अह आर्य" मा आर्य शब्दको प्रयोग भएको छ, यसैमा मुहम्मदलाई मलेच्छ भनिएको छ|
- मृच्छकटिका नाटकमा "देवार्य नंदन" शब्दमा आर्यको प्रयोग भएको छ|
- आर्य बाट नै 'आर्मी', 'आयरल्याण्ड', 'आर्मेनिया', 'येरवान तथा 'आर्कन' 'ईरान' आदि शब्द बनेका हुन् जसको अर्थ हुन्छ 'शूरवीर' तथा 'श्रेष्ठ'|

- श्री दुर्गा सप्तशतीमा श्री दुर्गाष्टोत्तरशतनामस्तोत्रम् अंतर्गत देवीका १०८ नामहरु मध्ये (दोस्रो श्लोकमा) एक नाम आर्या आउँछ|
- छन्द शास्त्रमा एक छन्दको नाम आर्या पनि प्रसिद्ध छ |
- गीतामा श्री कृष्णले जब वीर अर्जुनलाई आफ्नो क्षात्र धर्मको आदर्शबाट च्युत भएर मोहमा फसेको देखे तब उसलाई सम्बोधन गर्दै भने – "कुतस्त्वा कश्मलमिदं, विषमे समुपस्थितम् | अनार्यजुष्टमस्वर्ग्यम्, अकीर्ति करमर्जुन | (गीता २/३) अर्थात्, हे अर्जुन, यो अनार्य तथा दुर्जनहरु द्वारा सेवित, नरकमा लैजाने, अपयश गर्ने पाप यस कठिन समयमा तलाई कसरि प्राप्त भयो ? यहाँ श्री कृष्णले अर्जुनलाई आर्य बनाउनको लागि अनार्यत्वलाई त्याग दिने भनेका छन् |
- सिखहरुको गुरुविलासमा आर्य शब्दको उलेख – "जो तुम सुख हमारे आर्य | दियो सीस धर्म के कार्य |"
- बौद्धहरुको विवेक विलासमा आर्य शब्द – "बौधानाम सुगतो देवो विश्वम च क्षणभंगुरमार्य सत्वाख्या यावरुव चतुष्यमिद क्रमात |"
- बुद्ध वग्गमा आफ्ना उपदेशहरुलाई बुद्धले 'चार आर्य सत्य' नामले प्रकाशित गरेका छन् – "चत्वारि आरिय सच्चानि" (अ.१४ ) |
- धम्मपद अध्याय ६ वाक्य ७९/६/४ मा आएको छ – जुन आर्यहरुले भनेको मार्गमा चल्छ त्यहि पण्डित हो |
- जैन ग्रन्थ रत्नसार भाग १ पृष्ठ १ मा जैनहरुको गुरुमंत्रमा आर्य शब्दको प्रयोग भएको छ – "णमो अरिहन्ताण णमो सिद्धाण णमो आयरियाण णमो उवज्झाणाम णमो लोए सब्ब साहूणम" यहाँ आर्यहरुलाई नमस्कार गरिएको छ अर्थात, समस्त श्रेष्ठहरुलाई नमस्कार|
- जैन सम्प्रदायलाई 'आर्य धर्म' पनि भन्ने गरिन्छ| [पृष्ठ xvi, पुस्तक : समणसुत्तं (जैनधर्मसार)]
- जैन सम्प्रदायमा साध्विहरुलाई आर्या वा आरजा भनिन्छ|
- काशी विश्वनाथ मंदिरमा आर्य शब्द लेखिएको छ|

यसरि आर्य शब्दको अन्य पनि थुप्रै प्रमाणहरु दिन सकिन्छ तर यहाँ विस्तारको भयले यति नै लेखिन्छ |

**दस्यु, दास तथा अनार्य शब्दको मीमांसा: –**

केहि मतान्ध इतिहासकारहरुको मत छ कि वेदमा दास, असुर, दस्यु आदि शब्द द्वारा देशका मूल निवाशीहरु (द्रविड या आदिवाशी, दलित) हरुलाई सम्बोधित गरिएको हो, तर वेदमा दास, असुर, दस्यु शब्द कुनै जाति या नस्लको लागि प्रयुक्त भएको छैन| यसको पनि आर्य कै समान विशेषण र विशेष्य आदि पदहरुमा प्रयोग भएको छ| यहाँ केहि प्रमाण द्वारा स्पष्ट हुनेछ –

- अष्टाध्यायी ३/३/१९मा दासको अर्थ लेखिएको छ – "दस्यते उपक्षीयते इति दास:" जो साधारण प्रत्यन्नबाट क्षीण गर्न सकियोस त्यस्तो साधारण व्यक्ति|
- अष्टाध्यायी ३/१/१३४ मा आएको छ "दासति दासते वा य: स:" अर्थात दान गर्ने वाला, यहाँ दासको प्रयोग दान गर्ने वालाको लागि प्रयोग भएको छ|
- यसैको ३/३/११३ मा लेखिएको छ "दासति दासते वा अस्मे" अर्थात्, जसलाई दान दिइन्छ, यहाँ दान लिने वालालाई दास भनिएको छ अर्थात, ब्रह्मणले यदि दान लिन्छ भने उसलाई पनि दास भनिन्छ |
- त्यस्तै ३/१/१३४ मा "दास्यति य स दास:" अर्थात, जसले प्रजालाई मार्छ त्यो दास हो| यहाँ दास प्रजालाई र उसका शत्रु दुवैलाई भनिएको छ|
- अष्टाध्यायी ५/१० मा हिंसा गर्ने वाला, गलत भाषण गर्ने वालालाई दास दस्यु (डाकु) भनिएको छ|
- निरुक्त ७/२३ मा कर्मको नाश गर्ने वालालाई दास भनिएको छ|

**वेदमा दास शब्दको विविध रूपमा प्रयोग: –**

१- ऋग्वेद ५/३०/७ मा मेघको विशेषणको रुपमा भएको छ |
२- ऋग्वेद ६/२६/५ मा शीघ्र बन्ने वाला मेघको रूपमा भएको छ|
३- ऋग्वेद ७ /१९/२ मा नबर्सिने मेघको लागि भएको छ |
४- ऋग्वेद १०/८३/१ मा बल रहित शत्रुको लागि भएको छ|
५- ऋग्वेद १०/८३/१९ मा अनार्य (आर्य शब्दको मीमांसा दिइएको छ, त्यसैको विलोम अनार्य हो अत: यो पनि विशेषण नै हो) को लागि भएको छ|
६- ऋग्वेद १०/२२/८ मा अज्ञानी, अकर्मक, मानवीय व्यवहारले शून्य व्यक्तिको लागि प्रयोग भएको छ|
७- ऋग्वेद ६/२५/२,१०/१४८/२ र २/११/४ मा प्रजाको विशेषणमा प्रयोग भएको छ|
८- ऋग्वेद ३/३४/९ ,२/१२/४ मा वर्णको विशेषणको रूपमा भएको छ |
९- ऋग्वेद १०/२२/८ मा उत्तम कर्महीन व्यक्तिको लागि वेदमा दास शब्दको प्रयोग भएको छ| अर्थात, यदि ब्राह्मण पनि कर्महीन भयो भने त्यो पनि दास नै भनिने छ |
१०- ऋग्वेद ५/२९/१० मा मूक (लाटो या शब्दहीन) को विशेषणमा दासको प्रयोग भएको छ|

यी विवेचनहरु बाट स्पष्ट हुन्छ कि दास शब्दको प्रयोग कुनै नस्ल या जातिको लागि नभएर निर्जीव बादल आदि र सजीव प्रजा आदि दुवैको लागि पनि भएको छ| यसै गरि असुर शब्द पनि विविध अर्थहरुमा प्रयुक्त भएको छ, "यसको प्रयोग पनि आर्यको विलोममा अनेक स्थानमा भएको छ| " निघंटुमा मेघको पर्यायमा असुरको प्रयोग भएको छ| ऋग्वेद ८/२५/४ मा असुरको अर्थ बलवान हो| ईरानमा अहुरमजदा ईश्वरको नाममा प्रयोग गरिन्छ | स्कन्द स्वामीले निरुक्तको टीका गर्दै पृष्ठ १७२ मा असुरको अर्थ प्राणवानुदगाता गरेका छन्| दुर्गाचार्यले पृष्ठ ३६१ मा प्रज्ञावान अर्थ गरेका छन् |

उपरोक्त सबै उदाहरणहरुबाट बाट स्पष्ट हुन्छ कि वेदमा दास, आर्य, असुर, दस्यु आदि कुनै विशेष जाति या नस्लको लागि प्रयुक्त भएको छैन तर पनि केहि लाल बुझक्कडहरुले आफ्नो कुत्सित मनोवृत्तिका कारण वेदमा आर्य र अनार्यको अर्थ गलत लगाउने कुचेष्टा गर्दछन् | केहि विशेष शब्दहरु देखेर तिनलाई आदिवासी या मूलनिवासी भन्दछन् | यसमा एक उदाहरण इंद्र र वृत्रको युद्धलाई दिने गरिन्छ तर यो कुनै व्यक्ति-व्यक्ति विचको युद्ध नभएर एक आकाशीय घटना हो यसको बारेमा शतपत ब्राह्मणमा स्पष्ट लेखिएको छ - *"तस्मादाहुनैतदस्मि यद देवा सुरमिति" (शतपत ११/६/१/९ ) अर्थात, वृत्रासुर युद्ध भएको नभएर उपमार्थ युद्धको वर्णन हो*| यसको बारेमा अर्को छुट्टै लेख (वेदमा इन्द्र) मा वर्णन गरिएको छ; त्यहाँ पढ्न सकिन्छ|

अब केहि ति शब्दहरुको बारेमा विचार गरिन्छ जसलाई मूलनिवासी या आदिवासी भन्ने गरिन्छ:

**वेद र आदिवासी युद्ध:-**

वेदमा इतिहास छैन भन्ने कुरो प्रमाणित भैसकेको छ तर पनि केहि अतिवादी सोंच राख्नेहरुले भने जबरदस्ती निरुक्त तथा वेदांगहरुको साहयताले गरिएका भाष्यलाई नपढेर स्वयंको कल्पनाले वेदमा इतिहास छ भन्ने मानेर त्यसमा कैयौं आदिवासी र मूलनिवासी सिद्ध गर्दै छन् | ति मध्ये केहि यसप्रकार छन्:

**(क) काला रङ्का अनार्य या आदिवासी:–** ऋग्वेदमा आएको 'कृष्ण' शब्दलाई देखेर धेरैले काला रङ्का आदिवासीको कोरा कल्पना गरेका छन्, जो एकदम त्यस्तै हो जस्तो मुस्लिमहरुले 'शतमदीना' देखेर साउदी अरबको मदीना शहर सम्झने गर्दछन्, ईसाईहरुले 'ईश' शब्दलाई देखेर 'ईसामसीह' सम्झन्छन्, रामपालीय मूर्खहरुले 'कवीर' शब्द देखेर देवमा कबीर पन्थ भएको कल्पना गर्दछन्, 'वृषभ' शब्द देखेर जैनहरुले 'ऋषभदेव' सम्झन्छन्... | ऋग्वेद १/१०१/१ ,१/१३०/८ ,२/२०/७ ,४/१६/१३ र ६/४७/२१ ,७/५/३ मा कृष्ण शब्दको प्रयोग भएको छ जसलाई अम्बेडकरवादीहरुले असुर मूलनिवासी भनेर भन्दछन्| तर १/१०१/१ मा कृष्णगर्भा शब्द छ जसको अर्थ निरुक्त अनुसार कालो मेघको समुह हुन्छ| ऋग्वेद ७/१७/१४ मा सायणले पनि कृष्णको अर्थ कालो बादल नै गरेका छन्| ऋग्वेद १/१३०/८ मा त्वच कृष्णामरन्ध्यत यस मन्त्रमा कालो मेघले ढाक्दा अन्धकार हुने वर्णन छ घटा यस मन्त्रको व्याख्यामा एक जना पुराना भाष्यकार वेंकट माधवले त्वच कृष्णको अर्थ मेघ नै गरेका छन्| ऋग्वेद २/२०/७ मा कृष्णयोनी शब्द छ यहाँ योनी शब्द दासीको विशेषणमा आएको छ र कृष्णको अर्थ कालो मेघ र दासीको अर्थ मेघमाला समुह अतः कृष्ण योनिको अर्थ मेघको विनाशकारी समुह हुन्छ | कृष्णयोनी – कृष्णवर्णा: मेघ: योनीरासा ता: कृष्णयोन्य

दास्य: (वेंकट ) ऋग्वेद ४/१६ /१३ मा पनि कृष्णको अर्थ कालो मेघ नै हो| ऋग्वेद ६/४७/२१ मा महीधरले पनि कृष्णको अर्थ कुनै व्यक्ति विशेषको लागि नभएर कालरात्रि गरेका छन् | ऋग्वेद ७/५/३ मा अस्किनी पद आएको छ जसको अर्थ कालो रङको जाति भनेर पाश्चात्य विद्वानहरुले गरेका छन् तर निघंटु १/७ मा यसलाई रात्रिको पर्याय दिइएकोछ जसको अर्थ हुन्छ-अँधेरी रात| अत: स्पष्ट छ कि वेदमा कुनै काला आदिवासी तथा काला मूलनिवासी छैन, यी सब मेघ, रात्रि आदिका लागि प्रयुक्त भएका छन्|

**(ख) चेप्टो नाक भएका आदिवासी: –**

ऋग्वेद ५/२९/१० मा अनास शब्द आएको छ जसको अर्थ पश्चमी विद्वानहरुले चेप्टो नाक गरेका आदिवासी भनेर गरेका छन्| तर धातुपाठ अनुसार अनासको अर्थ हुन्छ - नासते शब्द करोति अर्थात जसले शब्द गर्दैन अर्थात नगर्जने मेघ

**(ग) लिंग पूजक आदिवासी: –**

ऋग्वेद ७/२१/५ र १०/९९/३ मा शिश्नदेव शब्द आएको छ जसलाई कसैले लिंग पूजक आदिवासी भनेर भन्दछन्| सिन्धु सभ्यतामा कुनै कुनै लिंग र योनिका चित्रहरु पनि भेटिएका छन् जसबाट तिनको अनुमान गरिन्छ तर शिश्नदेवाको अर्थ यास्कले निरुक्त ४/१९ मा निम्न अनुसार गरेका छन् – *"स उत्सहता यो विषुणस्य जन्तो : विषमस्य मा शिश्नदेवा अब्रह्मचर्या " यहाँ शिश्नदेवको अर्थ अब्रह्मचारीगरिएको छ अर्थात यस्तो व्यक्ति जो व्यभिचारी हो |*

**आदिवासिहरुका विशिष्ट व्यक्ति र उनको समीक्षा: –**

पाश्चात्य विद्वानहरु र उनका अनुयायिहरुले वेदमा निम्न शब्द- शम्बर, चुमुरि, धुनि, प्रिप्रू, वर्चिन, इलिविश आदि देखेर यिनलाई आदिवासिहरुका मुखिया भनेका हुन सक्छन्|
**(क) शम्बर:** – यो ऋग्वेदको १/५९/६ मा आएको छ| महर्षि यास्कले निरुक्त ७/२३ मा शम्बरको अर्थ मेघ गरेका छन् – "अभिनच्छम्बर मेघम |"
**(क) चुमुरि:** – यो ऋग्वेदको ६/१८/८ मा आएको छ| चुमुरि शब्द चमु अदने धातुबाट बन्छ| चुमुरिको अर्थ त्यो मेघ हुन्छ जसले पानी पार्दैन|
**(ग) वर्चिन:** – यो ऋग्वेदको ७/९९/५ मा छ| यो शब्द 'वर्च दीप्तो' धातुबाट बनेको छ| जसको अर्थ त्यो मेघ हुन्छ जसबाट बिजुली चम्कन्छ|
**(घ) इलीबिश:** – यो ऋग्वेदको १/३३/१२ मा छ| यसै शब्दबाट केहि मुस्लिम विद्वान्हरुले शैतान-इब्लीसको कल्पना गर्ने गर्दछन् जो कुरान र बाइबल आदिमा आएको छ तर यहाँ वेदमा यो कुनै शैतान हैन| सम्भवतः वेदको यहि शब्दबाट अरबी, हिब्रू आदि भाषामा इब्लीस शब्द प्रचलित भएको हुन सक्छ| किनकि चिराग, अरव, अल्लाह, रव, नवाज आदि शब्दहरु संस्कृत भाषा संग ति भाषाहरुमा समानता दर्शाउने शब्द हुन्| निरुक्त ६/१९ मा इलीबिशको अर्थमा महर्षि यास्कले लेखेका छन् "इलाबिल शय:" अर्थात, भूमि भित्र दुलोमा सुत्ने वाला अर्थात, वृष्टि जल जब भूमिमा प्रवेश गर्दछ तब त्यसलाई इलिबिश भनिन्छ|
**(ङ) पिप्रू:** – यो ऋग्वेदको ६/२०/७ मा आएको छ| यो शब्द "पृ पालनपूरणयो:" धातुबाट बन्छ| जसको अर्थ हुन्छ त्यस्तो मेघ जसले वर्षा द्वारा प्रजाको पालन गर्दछ|
**(च) धुनि:** – यो ऋग्वेदको ६/२०/१३ मा छ| निरुक्त १०/३२ मा धुनिको अर्थ लेखिएको छ- "धुनिमन्तरिक्षे मेघम|" अर्थात, यो एक प्रकारको मेघ हो| धुनोति इति धुनि: अर्थात यस्तो मेघ जुन काँप्छ र गर्जना गर्दछ | अत: स्पष्ट छ कि वेदमा कुनै आदिवासी या जनजातिको उल्लेख या युद्धको वर्णन छैन तर समस्त जड सम्बन्धी र विशेषण सम्बन्धी शब्द छन्|
**प्रश्न: – ठिक छ, हामिहरुले यो मान्दछौं कि आर्य शब्द विशेषण हो र यो जसका लागि पनि प्रयुक्त हुन सक्छ, जो श्रेष्ठ छ तर सवर्ण यस देशका थिएनन्, यिनीहरु बाहिर बाट आएका थिए?**
**उत्तर: – हाम्रो कुनै पनि वैदिक ग्रन्थमा सवर्णहरुको बाहिरबाट आएको भन्ने लेखिएको छैन तर यहाँबाट क्षत्रिय, ब्राह्मण, वैश्य आदि अन्य देश-देशान्तरमा गएको वर्णन भने अवश्य छ|**

सनातन वैदिक सभ्यता र अन्य सभ्यताहरु संगको समानतालाई देखेर मानिसहरुले यहि कल्पना गर्दछन् कि विदेशीहरु यहाँ आएर यहाँको सभ्यतालाई नष्ट गरेर आफ्नो विदेशी सभ्यता प्रचारित गरे तर यो केवल कपोल कल्पना मात्र हो| आर्यहरु यहाँबाट संसारका अन्य देशहरुमा गएका थिए यसको प्रमाण:– मनुस्मृति-१०-४३ मा आएको छ कि –

"शनकैस्तु  क्रियालोपादिमा: क्षत्रियजातय:। वृषलत्वं गता लोके ब्रह्माणादर्शनेन्"॥
निश्चय गरेर यिनै क्षत्रियहरु आफ्ना कर्महरुको त्यागबाट र यज्ञ, अध्यापन, तथा संस्कारादि ब्राह्मणहरु संग नमिल्नाले शुद्रत्वमा परिणत भयो।
"पौण्ड्रकाश्चौड्रद्रविडा: काम्बोजा यवना: शका:। पारदा: पहल्वाश्चीना: किरात: दरदा: खशा:॥मनु-१०/४४॥
पौण्ड्रक, द्रविड, काम्बोज, यवन, चीनी, किरात, दरद यी समुदायहरु शुद्रत्वमा परिणत भए र कैयौं मलेच्छ पनि भए जसको विद्वानहरु संग संपर्क भएन।
यी श्लोकहरु बाट स्पष्ट छ कि आर्यहरु यहाँ बाट बाहिर गएर बसेका थिए र विद्वानहरुको संगत नमिल्नाले उनीहरुको मलेच्छ आदि संज्ञा भयो| मुनि कात्यायनले आफ्नो याजुष ग्रन्थ प्रतिज्ञा परिशिष्टमा लेख्छन् कि ब्राह्मणहरुको मूलस्थान भारतको मध्य देश हो| महाभारतमा लेखिएको छ कि  "गणानुत्सवसंकेतान दस्यून पर्वतवासिन:| अजयन सप्त पांडव" अर्थात, पाण्डवहरुले सप्त गणहरुलाई जितेका थिए| यसरि स्पष्ट छ कि आर्यहरु विदेशबाट हैन यहाँ बाट अन्य देशहरुमा गएका थिए|

**आर्यहरुको विदेश गमन: –**

**मिश्र गमन**: – भविष्य पुराण खंड ४ अध्याय २१ मा कण्व ऋषि मिश्र गएको लेखिएको छ जहाँ उनले १०,००० मानिसहरुको शुद्धिकरण गरेका थिए|

**रूस र तुर्किस्थान गमन:** – lassen को 'Indiscehe Alterthumskunde' मा आर्यहरु तुर्क र रूस मा गमनको बारेमा लेख्छ कि "It appears very probable that at the dawn of history, east turkistan was inhabited by an aryan population."

**सिथिया देशमा गमन:** – सिथिया देश (यो देश देन्यूब नदी देखि ठीक दक्षिणी रूसको छेउ सम्म, क्यास्पियन सागरको पूर्वमा अमू एवं सिर नदीको घाटी सम्म, पामीर पर्वत शृंखला सम्म तथा तारिम नदीको घाटी सम्म फैलेको थियो) प्राचिन समयमा यहाँ बाट गएका शक नामक क्षत्रियहरुले उक्त वस्ती बसाएका थिए जसको प्रमाण विष्णुपुराण ३/१/३३-३४ मा छ "*वैवस्व मनुका इस्वाकु, नाभागा, धृष्ट, शर्याति, नाभा ने दिष्ट, करुष, प्रिश्ध्र, वसुमान, नरीशयत यी नौ जना  पुत्र थिए* | हरिवंश पुराण अध्याय १० श्लोक २८ मा लेखिएको छ  – "*नरिष्यंतका पुत्रहरुको नाम शक थियो* " विष्णु पुराण ४/३/२१ मा आएको छ कि यी शकहरुलाई राजा सगरले आधा टाउको खौरेर देशबाट निकाली दिए र यी सिथिया (शकप्रदेश ) तिर गएर बसे |

**चीन गमन**: – मनुस्मृति बाहेक चीनियाहरुका आदिपुरुषहरुका विषयमा प्रसिद्ध चीनी विद्वान यांगत्साईले सन १५५८ मा एक ग्रन्थ लेखेका थिए| (यस ग्रन्थलाई सन १७७३मा हुया नाम गरेका विद्वानले सम्पादित गरे उक्त पुस्तकलाई पादरी क्लार्कले अनुवाद गरे) त्यसमा लेखेका छन् कि "अत्यंत प्राचीन कालमा भारतका के मो लो ची राज्यका आह यू नामक राजकुमार युनन्न प्रांतमा आयो| यसको पुत्रको नाम ती भोगंगे थियो | यसका नौ पुत्र भए | यिनकै सन्तति बाट चीनियाहरुको वंश वृद्धि  भयो|" यहाँ यी राजकुमार आदि का चीनी भाषानुवादित नाम हुन् यिनका वास्तविक नाम अरु नै होला जस्तो कि शोलिन टेम्पलका निर्माता बोधि धर्मनको नाम चीनियाहरुले दामो गरिदिएका थिए | यी बाहेक यहाँका क्षत्रिय, वैश्य तथा ब्राह्मणहरु अन्य कारणले पनि समुन्द्र पार गरेर अनेत्र देशमा जाने गर्दथे किनकि त्यति बेला यहाँ निक्कै विशाल विशाल यांत्रिक नौकाहरु थिए जसको उल्लेख यहाँका प्राचीन वाङ्गमय वेद, रामायण, महाभारत, पुराण आदिमा जहाजहरुको उल्लेख आउँछ। जस्तै बाल्मीकि रामायणको अयोध्या काण्डमा यस्ता विशाल नौकाको उल्लेख छ जसमा सयौं योद्धा सवार हुने गर्दथे।
नावां शतानां पञ्चानां कैवर्तानां शतं शतम। सन्नद्धानां तथा यूनान्तिष्ठक्त्वत्यभ्यचोदयत्॥
अर्थात्, सैयौं सन्नद्ध युवकहरुले भरीएका पाँच सय नौकालाई सैयौं नाविकहरुले प्रेरित गर्दछन्।
यस्तै गरि महाभारतमा यंत्र-चालित नौकाको वर्णन पाइन्छ।
सर्ववातसहां नावं यंत्रयुक्तां पताकिनीम्।
अर्थात्, यंत्र पताका युक्त नौका, जो सबै प्रकारको हवालाई सहन सक्छ।
कौटिलीय अर्थशास्त्रमा राज्यको तर्फबाट नौकाको पुरा प्रबंधको संदर्भमा जानकारी पाइन्छ। ५औं सताब्दीमा भएको वारहमिहिर कृत 'बृहत् संहिता' तथा ११औं सताब्दीको राजा भोज कृत 'युक्ति कल्पतरु' मा जहाज निर्माणको बिषयमा प्रकाश पारिएको छ।

नौका विशेषज्ञ भोजले नौकामा फलामको प्रयोग नगर्नु भनेर चेतावनी दिएका छन्। किनकि समुद्री चट्टानहरुमा कहीं कहीं चुम्बकीय शक्ति हुन सक्छ। चुम्बकले नौकालाई आँफू तिर खिचेर दुर्घटनामा पार्न सक्छ। अत : स्पष्ट छ कि यहाँबाट नौका द्वारा समुद्र पार गरेर अन्य देशमा जाने काम हुन्थ्यो| त्यसै कारणले यहाँको र अन्य देशहरुको सभ्यतामा निक्कै समानता पाइन्छ| यसलाई विस्तार संग जान्नको लागि पी एन ओकको पुस्तक, स्वामी रामदेव गुरुकुल कांगडीको -भारतवर्षको इतिहास, रघुनंदन शर्मा को

पुस्तक- वैदिक सम्पति, स्टेफन केनप्पको पुस्तक, पंडित भगवतदत्तको वृहत भारतको इतिहास, वैदिक वांगमयको इतिहास पढ्न सकिन्छ|

**सिन्धु सभ्यता र आर्य आक्रमणकारी:** – केही विद्वानहरुले सिन्धु सभ्यको बारेमा कोरा कल्पना गर्ने गर्दछन् कि सिन्धु सभ्यतालाई विदेशी आर्यहरुले नष्ट गरिदिए तर अकाट्य प्रमाणहरु छन् कि सिन्धु सभ्यता आज सम्म पनि विद्यमान छ| केवल सिन्धु वासिहरुका पुराना नगरहरु नष्ट भएका छन् जो प्राकृतिक विपत्तिका कारणले हुन सक्छ|

एक योगी जसका ३-४ शिर छन् जो शिव भगवान हुन् र अर्को मेवाडका एकलिंगनाथ:





*सिन्धु घाटी सभ्यता र मेवाडका एकलिंगनाथ*

यहाँ देख्न सकिन्छ कि सिन्धु घाटी सभ्यताका शिव र मेवाडका एकलिंगनाथ अर्थात् भगवान शिवमा कति समानता छ। कुनै समयमा मेवाडमा पनि सिन्धु घाटी सभ्यताका मानिसहरु रहन्थे र आज पनि तिनले ४ शिर भएका शिवको पूजा गर्ने गर्दछन्।

कृष्ण र वृक्षबाट निस्कन लागेका २ यक्ष:



सबैलाई त्यो कहानी थाहा छ कि जसमा भागवान श्रीकृष्णले अन्जान मै २वटा वृक्ष उखेली दिन्छन् जसबाट २ यक्ष निस्कन्छन्, यो शिलाले त्यहि कहानी अवगत गराउँदै छ, यहाँ २ वृक्ष देख्न सकिन्छ जुन उखेलिएका छन् (विद्वान् अनुसार) र तिनका बिचमा एक व्यक्ति नजर आउँदै छ, जुन यक्ष हुन सक्छ, अर्को यक्ष शायद यस शिलाको अर्को पट्टि हुन सक्छ किनकि यो शिला टुक्रिएको छ।



भारतमा रथ थिए र घोडा पनि, सत्य त यो हो कि आज जुन घोडा यूरोप र एशियामा छन् ति ७० वर्ष पहिले भारतीय घोडाहरु बाट विकसित गरिएका हुन् |

नंदी संग लड्दै गणेश या नंदी संग युद्ध कला सिक्दै कार्तिक



स्रोत –http://prachinsabyata.blogspot.in/2013_08_01_archive.html


16 TREES IN INDIAN ART MYTHOLOGY AND FOLKLORE

Fig. 2. *Goddess giving birth to the vegetation;* seal; Harappa; National Museum, New Delhi

उपरोक्त एक चित्रमा दायाँ तिर एक चित्र छ, यो चित्र लज्जा गौरी नामक देवी संग मिल्छ तर सिन्धु वासी पनि आज जसरि पुजिन्छ, यसैगरी लिंग र योनि पूजक थिए यस कारणले त्यहाँ कैयौं लिंग र योनिक प्रतीक भेटिन्छन् आज पनि कामख्या आदि शक्तिपीठहरुमा देवीको योनिलाई पूज्ने गरिन्छ |

तलको एक लज्जा गौरीको चित्र जो पूर्वी र दक्षिण भारत, तथा नेपालमा पूजिन्छ: –



यसै गरि एक अन्य शीलामा सर्प देवी छिन: –



योे सर्प देवीको चित्र मनसा देवी संग निक्कै मिल्छ: –



यति मात्र हैन, यो सर्प देवी अन्य सभ्यताहरुमा पनि छ, सम्भवत भारत बाट नै यसको प्रचार अन्य सभ्यताहरुमा भएको हुन सक्छ:–

यो चित्र Minoan Goddess 1600 BC को हो |



(The younger **snake goddess**, from the palace of Knossos. Heraklion Archaeological Museum, Greece)

यसै गरि आधुनिक भारतीय र सिन्धु सभ्यतामा समानता देखिन्छ जसबाट स्पष्ट हुन्छ की सिन्धु सभ्यता नष्ट भएको छैन | जस्तै आज पौराणिक सभ्यताका साथ वेद र वैदिक ज्ञान छ, त्यसै गरि सिन्धु सभ्यतामा पनि थियो| सिन्धु लिपि अहिले सम्म पढिएको छैन तर पनि केहि शीलामा बनेका चित्रहरुमा वैदिक मन्त्र त्यस समयमा हुनु प्रसिद्ध छ| सिन्धु लिपि ब्राह्मी लिपि संग मिल्दो जुल्दो छ यो बाहेक सिन्धु सभ्यतामा कैयौं यज्ञ वेदिहरु भेटिएका छन्, अर्थात सिन्धु वासीहरु अग्निहोत्र गर्दथे |



उपर्युक्त जुन चित्र छ यो हडप्पा संस्कृति बाट प्राप्त एक मुद्रा (सील) को प्रतिकृति हो। यो सील आज सील नं ३८७ र प्लेट नं CXIIको नामले सुरक्षित छ| यस सीलमा एक वृक्षमा दुई पंक्षी देखिन्छन्, जसमा एकले फल खाँदैछ र दोस्रोले केवल हेरिरहेको छ। यदि हामेले ऋग्वेदमा नजर लगायौं भने त्यहाँ एक मंत्र यस प्रकारको छ- "द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्यो अभि चाकशीति || -ऋग्वेद:१/१६४/२० यो मंत्रको भाव यहि हो कि एक संसाररूपी वृक्षमा दुई लगभग एक समान पंक्षी बसेका छन्। तिनमा एकले उसको भोग गर्दै छ र अर्काले नभोगेर उसको निरीक्षण गर्दैछ।

यसै गरि वेदमा ७ प्राण, ब्राह्मणहरुमा ७ ऋषि, ७ देविहरु, ७ किरण, ७स्वर, आयुर्वेदमा अन्न देखि वीर्य बन्दा सम्म ७ चरण, ७ नदि, आदिका रूपमा ७ अंकको निक्कै महत्व छ| सिन्धु सभ्यताको एक शीलामा ७ जना मानिसको चित्र छ:-



यसै गरि सिन्धु सभ्यतामा स्वस्तिकको चिन्ह भेटिएको छ जसलाई यहाँ देख्न सकिन्छ, यो प्रायः गरि शुभ कार्यहरुमा बनाउने गरिन्छ, यज्ञ गर्दा यज्ञ वेदीलाई सजाउनमा पनि यो बनाइन्छ |



स्वस्तिको अर्थ हुन्छ कल्याण कारक, उत्तम, शुभ आदि चिन्ह शुभ र कल्याणका प्रतीक हुन् त्यसैले यसको नाम स्वस्तिक भएको हो|
यसरि नै खोज्ने हो भने अनेकौं प्रमाण भेटिन सक्छन् विस्तार भयका कारण यसलाई यहीं छोडिन्छ| यसबाट यही सिद्ध हुन्छ कि सिन्धु सभ्यता आज पनि विद्यमान छ कसैले उसलाई नष्ट-भ्रष्ट गरेको छैन| थोरै केहि अंतर त अवश्य आएको छ किनकि कुनै पनि वस्तु सदा एकनास रहन सक्दैन समय तथा मानिसका साथ साथ यसमा पनि परिवर्तन आउँछ|

आर्य र विदेशिहरुको सभ्यता मिल्दो-जुल्दो छ त्यसैले आर्यहरु विदेशी हुन् भन्ने कोरा कल्पना जसरि गरिएको थियो, त्यो गलत साबित भयो| तर सिन्धुवासि (हिन्दु) को सभ्यता अन्य विदेशीको सभ्यता संग मिल्छ भन्ने आधारमा यदि कसैले सिन्धुवासी (हिन्दु) पनि विदेशी नै थिए भन्ने धारण बनाउँछ भने त्यो भयङ्कर भूल तथा गलत धारणा नै हुने छ किनकि माथि नै भनियो कि पहिले यहाँका वासिन्दाहरु अरु देशहरुमा जाने गर्दथे|

**सिन्धु (हिन्दु) सभ्यता र अन्य सभ्यतामा समानता:-**

सिन्धु सभ्यतामा भेटिएको सर्प देवी र मिनोअन देवीको समानता देखाइएको छ| सिन्धु लिपि पनि अन्य देशहरुको प्राचीन

लिपि संग निक्कै मिल्दो जुल्दो छ जसलाई चित्रमा देखाइएको छ:-



यसमा सिन्धु लिपि र प्राचीन चीनको लिपिको समानता देखिएको छ |



*a is Upper Palaeolithic (found among the cave paintings), b is Indus Valley script, c is Greek (western branch), and d is the Scandinavian runic alphabet.*

उपरोक्त चित्रमा सिन्धु, ग्रीक, रूमानिया लिपिमा समानता देखाइएको छ |

**अन्य समानताहरु: –**

मोहनजोदडोमा सेता पत्थरबाट बनेका मुर्तिहरु भेटिएका छन् जुन असीरियाको सभ्यता संग मेल खान्छन्| चाँदीका चौखुटा टुक्राहरु प्राप्त भएका छन् जुन बेबीलोन संग मिल्छन्| उत्खननमा एउटा मंदिर पनि भेटिएको छ जसमा पद्मासन लगाएर बसेका एक देवता या योगी छन्, यो पनि बेबीलोन संग मिल्छ| माथी एक सर्प देवीको चित्र पनि छ जुन मिनोअन देवी संग मिल्छ| घरमा प्लास्टर भेटिएको छ जुन मेसोपोटामियाबाट ल्याइएको हुन सक्छ, केहि भाँडा-कुडा भेटिएका छन् जुन मेसोपोटामीयाको सभ्यतामा भेटिएका भाँडाहरु संग मिल्दा-जुल्दा छन्| हेनरी साईसको कथन छ कि “बेबीलोन र भारतमा ३००० इ पु देखि नै सम्बन्ध थियो| (Archibald Henry Sayce’s lecture on the origion and growth of religion among the babilonions) यसै गरि बेबीलोनको एक रेशमी वस्त्रको नाम पनि सिन्धु नामले प्रसिद्ध छ| अत: यहाँ स्पष्ट छ कि सिन्धु वासिहरुको पनि अन्य देशहरु संग सम्बन्ध थियो| यदि यस्ता किसिमका समानताहरुबाट आर्यहरुलाई विदेशी भन्ने हो भने सिन्धुवासिहरुलाई किन नभन्ने?

उपरोक्त प्रमाणहरुबाट सिद्ध भैसक्यो कि आर्यहरु बाहिरबाट आएका थिएनन्| तर केहि छुद्र चिन्तकहरुले डीएनए परिक्षणको प्रमाण दिने गर्दछन् तर डीएनए परिक्षामा कैयौं पटक अलग अलग परिणाम पनि आएका छन्| आधुनिक डीएनए परिक्षाबाट पनि यहि साबित भएको छ कि सवर्ण र दलित आदिवासी, द्रविड सबका पूर्वज एक थिए कोहि विदेशी थिएनन्| यसको लागि निम्न लिंकमा गर्न सकिन्छ: | http://timesofindia.indiatimes.com/india/Aryan-Dravidian-divide-a-myth-Study/articleshow/5053274.cms

अब यहाँ विदेशिहरु द्वरा निक्कै पहिले निकालेको गलत डीएनए परिक्षाको समीक्षा गरिन्छ: –

**माइकलको डीएनए परिक्षण प्रतिवेदनको समीक्षा: –**

२००१ को टाइम्स अफ इन्डियामा एउटा समाचार छापिएको थियो कि अमेरिकाको वाशिंगटनमा उत्ताह विश्वविध्यालयका जीवविज्ञान विभागका विभागाध्यक्ष माइकल बाम्शाद ले डीएनए परिक्षणको आधारमा भनेका थिए कि भारतका sc, st जातिहरुको डीएनए एक जस्तो छ तथा विदेशिहरुको र gen को एक जस्तो छ |यसबाट उनले निष्कर्ष निकालेका थिए कि ब्राह्मण, क्षत्रिय, वैश्य आदि विदेशी थिए र st sc मूलनिवाशी |

यस सम्बन्धमा एउटा प्रश्न सोधन सकिन्छ कि तिम्रो परिवार अमेरिका गएर वस्न थाले भने उनको डीएनए तिमि संग मिल्ला कि नमिल्ला?| अवश्य नै मिल्नेछ | यसै प्रकारले यहाँबाट नै सवर्णहरु विदेशमा गएका थिए | ब्राह्मणहरु विद्या प्रचार हेतु, क्षत्रिय दिग्विजय हेतु र वैश्य व्यपार हेतु, यी मध्ये कैयौं विदेशमा नै वशोवास गर्न थाले | आज समान डीएनए भएका ति सबै विदेशीहरु यिनैका संतानहरु हुन्| आज पनि निक्कै मानिसहरु व्यापार-व्यवशाय तथा रोजगारको शिलशिलामा यताबाट विदेशमा गएर बसिरहेका छन् | अनेकौं श्रमिकहरु पनि उतै गएर वस्दै छन् | अनि तिनीहरुको डीएनए यहाँका उनका परिवारहरु संग पक्कै मिल्ला कि नमिल्ला? तब ति दुई मध्ये कसलाई मूल निवासी भन्ने? तिनका परिवारलाई या बाहिर बसेकालाई अथवा दुवैलाई? पूर्वकालमा यो देश साधन सम्पन्न तथा सम्वृद्ध थियो त्यसैले शुद्रहरुलाई विदेश जानु पर्ने धेरै आवश्यकता भएन|

अर्को कुरो के भने, माइकलले केवल दक्षिण भारतका १ या २ गाउँको मात्र डीएनए परिक्षण किन गरायो? के १२५ करोडको जनसंख्या भएको देशमा १ या २ गाउँ बाट निष्कर्ष निकाल्नु तर्क संगत होला ? यो बाहेक हाम्रा दलित दाजु-भाइहरुको गोत्र पनि कतिपय क्षत्रि तथा ब्राह्मणहरु संग मिल्छ, यसबाट पनि यहि सिद्ध हुन्छ कि हाम्रा पूर्वज एक थिए |

उपरोक्त सबै निष्कर्षहरु बाट यहि सिद्ध गर्न सकिन्छ कि सवर्ण दलित आदिका पूर्वज एक थिए, कोहि पनि विदेशी थिएनन्| तथापि यस देशमा केहि विदेशी आक्रमणकारीहरु आएका थिए जस्तै अंग्रेज, मुगल, फारसी, तुर्की, शक, हुण, यूनानी आदि .. यी मध्ये धेरैलाई यहाँका क्षत्रिय राजाहरुले लखेटेका थिए र केहि यहीं बसेका थिए| यी विदेशी जाती पनि आज सबै वर्गमा केहि विशेष पहिचानका साथ पाइन्छन् किनकि यिनीहरुले यहाँका बासिन्दाहरु संग विवाह आदि सम्बन्ध स्थापित गरेका थिए|

**विदेशिहरुको भारत आगमन: –**

हिन्दी मासिक पत्रिका – सरस्वती, अगस्त १९१४ मा लेखिएको थियो कि रीवा राज्यमा एक ताम्र पत्र भेटिएको छ| त्यसमा लेखिएको छ कलचुरी राजा कर्णले तातारी हूणहरुलाई परास्त गरेर उनकी कन्याका साथ विवाह गरे, खत्रिहरु र राजपूतहरुमा आज पनि हूण संज्ञा विद्यमान छ |

"पुत्रोस्य खगदलितारिकरीन्द्रकुम्भमुत्ताफ्लै: स्म ककुभोर्चति कर्णदेव :||
अजनि कलचुरीणा स्वामीना तेन हुणान्वयजलनिधिलक्ष्म्या श्रीमदावल्लदेव्याम ||" –राजपूतानाको इतिहास बाट उद्दृत

राजा चन्द्रगुप्तले सेलुक्सकी पुत्री संग विवाह गरे|

कनिष्क नाम गरेको हूण राजाले भारतमा बौद्ध धर्म ग्रहण गरेर यहीं निवास गरे| यसै गरि मिलेंद्र पनि भारतमा बौद्ध बन्यो| उनका कैयौं वंशजहरु भारतमा नै बसिरहे|

केहि शक भारतमा आएर बसे ति मध्ये राजा कुशान प्रमुख हुन्| यिनले यहाँ हिन्दू शैवमत स्वीकार गरे| आज पनि ब्राह्मणहरुमा शाकदीपी ब्राह्मण छन् |

उदयपुर राज्यका राजा गौहको विवाह ईरानका प्रसिद्ध बादशाह नौशेरवाकी पौत्रीका साथ भएको थियो| धेरैको विचार छ की उत्तर प्रदेशको एक जिल्ला बस्तीमा वस्ने कलहंस क्षत्रियहरु पनि ईरानी हुन् | पहिले भनियो कि कण्व ऋषिले मिश्रमा गएर शुद्धिकरण गराएका थिए र ति मध्ये धेरैलाई भारतमा ल्याएर पनि बसालेका थिए जसमा कैयौं शुद्र, क्षत्रिय, वैश्य र ब्राह्मणहरु पनि थिए|

यसै गरि इस्लामिक आक्रमणकारिहरु देखि भयभीत भएर पारसीहरु इरानबाट भारतमा आएर बसे|

गुजरातमा एक गाउँमा अफ्रिकी आदिवासीहरुको बस्ति पनि छ तिनीहरुले आज पनि अफ्रिकी संस्कृति र भाषा तथा रहन सहन प्रयोग गर्ने गर्दछन् |

प्रसिद्ध अंग्रेज इतिहासकार कर्नल टाडका अनुसार बप्पाले कैयौं अरबी युवतिहरु संग विवाह गरेर ३२ सन्तान पैदा गरे जो आज नौशेरा पठानका नामले परिचित छन्|

उपरोक्त वर्णनबाट यहाँ भारतमा केहि विदेशी जातिहरुको बारेमा प्रकाश पारियो जसबाट यहि निष्कर्षमा पुग्न सकिन्छ कि भारतका हरेक वर्गमा मध्यकालमा केहि विदेशी जातिहरुको पनि मिश्रण भयो चाहे ति शुद्र हुन् या ब्राह्मण |

तर यसबाट पनि यो सिद्ध हुन सक्दैन कि प्राचिन कालमा आर्यहरु विदेशबाट यहाँ आएका थिए| उपरोक्त वर्णनबाट यही सिद्ध हुन्छ कि यहाँका मानिसहरु विदेशमा गए र त्यहीं बस्न थाले फेरी पछी केहि आक्रमणकारी यहाँ आए जसमा मुस्लिम र अंग्रेजलाई छोडेर बाँकि सबै यहीं आर्य (हिन्दू), बुद्ध, जैन आदि संस्कृतिमा घुल-मिल भए जो कि यस देशको मूल संस्कृति थीयो | तर हाम्रो बानि नै परिसकेको छ कि जब सम्म कुनै विदेशीले हामीलाई भन्दैन तबसम्म हामीले कुनै कुरो मान्दैनौं, त्यसैले आर्यहरु मूलनिवासी भएको र आर्यहरु विदेशी नभएको भन्ने केहि पाश्चत्य विद्वानहरुको पनि मत यहाँ प्रस्तुत छ: –

**पाश्चात्य विद्वानहरुको दृष्टिमा आर्य नै यहाँका मूल निवासी हुन्:–**

(१) यवन राजदूत मैगस्थ नजले लेखेको छ कि - भारत अनगिन्ती र विभिन्न जातिहरु मिलेर बसेको देश हो| यी मध्ये एक पनि मूलमा विदेशी थिएन, प्रत्युत स्पष्ट नै सबै यहि देशका हुन् |

(२) नोबल पुरूस्कार विजेता विश्वविख्यात विद्वान् मैटरलिंकले आफ्नो ग्रन्थ सीक्रेट हार्टमा लेख्छ "It is now hardly to be contested that this source (of knowledge) is to be found in India. thence in all probability the sacred teaching spread into egypt, found its way to ancient persia and chaldia, permeated the hebrew race and crept in greece and south of europe, finaaly reaching china and even america." अर्थात, अब यो कुरो निर्विवाद छ कि विद्याको मूल स्थान भारतवर्षमा पाइन्छ र सम्भवतः यो पवित्र विद्या मिश्रमा फैलियो| मिस्रबाट ईरान तथा कालदियाको मार्ग हुँदै यहूदी जातिलाई प्रभावित गर्यो, फेरी यूनान तथा यूरोपको दक्षिण भागमा प्रविष्ट भयो, अंतमा चीन र अमेरिका पुग्यो|"

(३) इतिहासविद मयूरले आफ्नो Original sanskrit text vol २मा भन्छ " यो निश्चित छ कि संस्कृतका ग्रन्थ चाहे जति सुकै पुरानो किन नहोस्, आर्यहरु विदेशी भएको कुनै उल्लेख भेटिदैन|"
(४) विश्वविख्यात एलफिन्सटनले आफ्नो पुस्तक "History of India vol1" मा लेख्छ "न मनुस्मृतिमा न वेदमा आर्यहरु बाहिरबाट आएको कुनै वर्णन प्राप्त हुँदैन |

अन्तमा यहि भनेर लेख समाप्त गरिन्छ कि आर्यहरु कुनै पनि विदेशी जातिका हैनन् न सवर्णहरु विदेशबाट आएर यहाँको संस्कृतिलाई नष्ट-भ्रष्ट गरे, यी सबै यहींका मूलनिवासी थिए र आर्य एक विशेषण हो जुन कसैका साथमा पनि प्रयुक्त हुन सक्छ वनवासी, शुद्र, दलित सबका साथ, बस् उसको कर्म श्रेष्ट होस्| रामायणमा जाम्बवान, हनुमान, बालि, सुग्रीव आदि वनवासी जातिहरुको लागि पनि आर्य शब्द प्रयुक्त भएको छ, अत: स्पष्ट छ कि जो पनि आर्य बन्न सक्छ |

अत: हाम्रा दलित दाजु-भाइहरु संग विनम्र आग्रह छ कि देशको एकताको लागि आर्यहरु विदेशी हुन् भन्ने गलत तथा कपोल कल्पित मान्यतालाई तिलान्जली दिएर आफ्ना आर्य महापुरुषहरुलाई पक्षपात रहित भएर मान सम्मान दिनु पर्दछ| अस्तु..

नमस्ते..!

**संधर्भित ग्रन्थ एवम पुस्तक: –**

**(१) क्या वेदों में आर्यों और आदिवासियों का युद्ध का वर्णन है? -श्री वेद्य रामगोपाल शास्त्री**
**(२) वैदिक सम्पति- रघुनन्दन शर्मा**
**(३) वेदार्थ भूमिका -स्वामी विद्यानंद सरस्वती**
**(४) निरुक्त-यास्क (भाषानुवाद-भगवतदत्त)**
**(५) बौद्धमत और वैदिक धर्म- स्वामी धर्मानंद**
**(६) भारतीय संस्कृति का इतिहास -प. भगवतदत्त**
**(७) कुलियात आर्य मुसाफिर -प. लेखराम**
**(८) भारतीय संस्कृति का इतिहास-स्वामी रामदेव**
**(९) बोलो किधर जाओगे – आचार्य अग्निव्रत नैष्ठिक**
**(१०) शुद्र कौन थे – डा. भीमराव अम्बेडकर**
**(११) आर्यों का आदिदेश -विद्यानंद सरस्वती**